वर्ष ४२: अङ्क ६: पूर्णाङ्क ४८५ कातिक २०६६ (VOL. 42 NO. 6 OCT-NOV 2009)




**श्रीओम श्रेष्ठ**
नि. सम्पादक

**तुलसीहरि कोइराला**
उपसम्पादक

**जानुका राई**
ले-आउट/डिजाइन

**पूर्णरत्न बज्राचार्य**
आवरण/कला

फोटो
**राजेन्द्र चित्रकार**
**नातिकाजी महर्जन**

**गोपालप्रसाद भट्टराई**
मुद्रण व्यवस्था

**भीम खरेल**
वितरण व्यवस्था

**गोरखापत्र संस्थान**
**धर्मपथ, काठमाडौं**
**फोन नं.** ४२४४४३५, ४२५५७२६, ४२५५७३० (एक्स नं.२५२ र २५४), पो.ब. नं. २३

e-mail, madhupark@gorkhapatra.org.np
web, www.gorkhapatra.org.np

**कार्यकारी अध्यक्ष**
**विजय चालिसे** तथा
**महाप्रबन्धक शम्भु श्रेष्ठद्वारा**
गोरखापत्र संस्थानको लागि
मुद्रित तथा प्रकाशित

# शतवार्षिकीको सन्देश

महाकवि लक्ष्मीप्रसाद देवकोटा (वि.सं. १९६६ कात्तिक २७–२०१६ भदौ २९) नेपाली भाषासाहित्यका युगस्रष्टा हुन्। साहित्यका प्रायः सबै विधामा सिद्धहस्त महाकवि देवकोटा महासागरजस्तै हुन्। उनको बारेमा जति अध्ययन–अनुसन्धान गर्दा पनि कहिलै पूर्ण हुन नसक्ने र जति सम्मान अर्पण गर्दा पनि कमी नै हुने योगदान र व्यक्तित्व सावित भइसकेको छ।

महाकवि देवकोटा लेखक, समालोचक, अनुवादक, विद्रोही, क्रान्तिकारी, सुधारवादी, मानवतावादी, पत्रकार, सामाजिक–साहित्यिक सङ्गठक, एकेडेमी संयोजक, विश्वविद्यालय संस्थापक, प्राध्यापक, मन्त्री धेरै भएर चिनिन्छन् अर्थात् अनेक परिचय भएर पनि महाकविकै रूपमा चिनिन्छन्। नेपाली साहित्यलाई विश्वसाहित्यमाझ चिनाउने महाकवि आम नेपालीका हृदयमा सबैभन्दा बढी पढिने लोकप्रिय स्रष्टाका रूपमा स्थापित छन्। शब्दकर्म र जीवनकर्ममा कहिल्यै अन्तर नदेखाउने आदर्श स्रष्टा महाकविको जन्म शतवार्षिकीसम्म आइपुग्दा पनि लोकप्रियता झन्झन् बढिरहनु आफैँमा गौरवशाली व्यक्तित्वको साक्षी हो। यही कारण महाकविको शतवार्षिकी समारोह नेपालभित्र मात्र नभएर नेपालीहरू भएका विश्वका धेरै राष्ट्रहरूमा मनाइरहेका छन्। यो श्रद्धा संस्मरणले विश्वभरि छरिएर रहेका नेपालीहरू महाकविको नाममा फेरि एकपटक जागृत र सङ्गठित हुन खोजिरहेको अनुभव हुन्छ। यो सन्देशले भाषासाहित्य मात्र नभएर समग्र नेपाल र नेपालीको हितका लागि सार्थक प्रयास ठहर्ने आशा गर्नसकिन्छ।

तर साहित्यलाई अनुत्पादक क्षेत्र ठान्ने शासकीय मानसिकतामा भने कुनै अन्तर आउन सकेको छैन। यही कारण महाकविजस्ता विराट् प्रतिभाले आठ महिनासम्म प्रज्ञाप्रतिष्ठानबाट तलब रोक्काको सजाय पाउनुपऱ्यो। त्यही कारण देवकोटाले स्वास्थ्य उपचारको अभावमा जीवन गुमाउनुपऱ्यो तर मृत्युपश्चात् भने काजकिरिया गर्न मात्र नभएर ऋण तिर्नसमेत सहयोग गऱ्यो। यदि जीवितअवस्थामै शासकको त्यस्तो सोच भएको भए महाकविले बढी बाँच्न पाउने र साहित्यिक भण्डार अझ धनी हुने स्पष्ट थियो। बाँचुञ्जेल उपेक्षा गर्ने र मरेपछि सम्मान गर्ने शासकीय प्रवृत्ति नै भएको छ। देशमा धेरैपटक व्यवस्था र सरकार परिवर्तन भइसके तर भाषासाहित्यप्रति भने शासकीय मानसिकतामा आजसम्म कुनै परिवर्तन आउन सकेको छैन। फलतः अहिले पनि धेरै देवकोटाहरू रोग र अभावसँग जुधिरहेका छन्, कति देवकोटाहरूले देवकोटाकै नियति भोगेका छन्। राष्ट्लाई स्तरीय सिर्जनाद्वारा साहित्यकलाको भण्डार धनी बनाउने स्रष्टाहरू गरिब बनिरहनुपरेको छ। यो विडम्बना कुन तन्त्रसम्म चलिरहने हो र कस्तो तन्त्रको आशा गरिरहने हो ? प्रश्न, प्रश्नमा नै सीमित छ।

तीन वर्षदेखि प्रज्ञाप्रतिष्ठान रित्तो हुने देशमा महाकविको शतवार्षिकी कार्यक्रमहरू जनस्तरबाट जे जस्तो रूपमा भइरहेका छन्, त्यो भने गौरवपूर्ण छ। यसबाट जनताले साहित्यप्रति प्रकट गरेको सद्भाव स्पष्ट हुन्छ। तसर्थ सरकारको मुख ताक्ने प्रवृत्ति त्यागेर महाकविको जन्म र कर्मघर, उनले प्रयोग गरेका सामानहरूको संरक्षणार्थ 'महाकवि सङ्ग्रहालय'को घोषणा गर्नसके महाकविप्रति सच्चा सम्मान, श्रद्धाञ्जली र शतवार्षिकी मनाउनुको सार्थकता हुने थियो।

'मधुपर्क' ले महाकवि शतवार्षिकी विशेषाङ्क प्रकाशनको लागि छोटो समयमा गरेको अनुरोधमा धेरै अमूल्य रचनाहरू प्राप्त हुनुलाई मधुपर्कप्रतिको सद्भाव सम्झिएका छौँ। यसप्रति हामी सदैव आभारी छौँ तर आफ्नो बाध्यताका कारण कतिपय लेखहरूलाई विशेषाङ्कमा समावेश गराउन नसकेकोमा क्षमा चाहन्छौँ र केही स्तरीय लेख–रचनाहरू भने आगामी अङ्कमा प्रकाशित गर्दै जाने पनि जानकारी गराउँदछौँ। ❐

यस अङ्कको मूल्य रु. ३५।- वार्षिक रु. २१०।- भा. रु. १३।- वार्षिक भा.रु. १५०।- (हुलाक खर्चबाहेक)




# मुनामदन र जि वया ला लाछि मदुनि गीतिकथा

**–प्रा. नर्मदेश्वर प्रधान**

कुनै पनि कृति, रचना, पाठ एक्लै उभिन सक्दैन। अरूबाट असम्बन्धित भई आफैं पूर्ण हुन सक्दैन। भानुभक्तले रामायण लेखे। भानुभक्तले लेखनमा प्रतिभा, विशिष्टता देखाए तर रामायणका कथावस्तु उनले पूर्वजहरूबाट लिएका थिए। कतिपय कवि लेखकहरूका कृति, रचनाहरूमा मिथकीय, पौराणिक घटना, पात्रहरू प्रतीक बिम्बको रूपमा प्रयोग भएको पाइन्छ। ज्ञानका अनेक दर्शनहरूका सन्दर्भ भेटिन्छ। इतिहासका प्रसङ्गहरू बुझ्न पर्ने हुन्छ। पुस्तकहरू पढ्दा सम्बन्धित सान्दर्भिक ग्रन्थ, रचना, विचार, सिद्धान्तहरूबारे स्पष्ट हुनपर्ने हुन्छ। कुनै पनि पुस्तक रचनामा अन्य ग्रन्थ, विचार, सिद्धान्तका अन्तर्सम्बन्ध भइरहन्छ। कुनै पनि पाठ टापुझैं अलग्ग रहन सक्दैन। जुलिया क्रिष्टिभाले आफ्ना अन्तरपार्ठीय सिद्धान्तमा यस विषय चर्चा गरेको पाइन्छ।

'मुनामदन' खण्डकाव्य महाकवि देवकोटाको लोकप्रिय कृति हो। यसको रचना वि.सं.१९९२ मा भएको थियो। यस खण्डकाव्य अद्यापि उतिकै प्रिय छ। नेपाली साहित्यमा सबभन्दा बढी बिक्री भएको पुस्तकको रूपमा यसले स्थान पाएको छ। यसमा सबैलाई छुने कविप्रतिभा मुनामदनमा अधिकतम प्रस्फुटित भएको पाइन्छ। मुनामदन झ्याउरे लयमा रचित खण्डकाव्य हो। यसको भाषा सरल छ। सरल शैलीका कारण मुनामदनले साधारण पाठकलाई पनि छुन्छ। गम्भीर पाठकलाई पनि मुनामदन उत्तिकै गहन रचना भइदिन्छ। मानववादी, प्रकृतिदर्शन, आध्यात्मिक चिन्तनका गहिराई 'मुनामदन' को विशेषता हो। यसभित्र डुब्न चाहनेहरूले यसभित्र अनमोल बौद्धिक रत्नहरू भेट्टाउन सक्दछन्। मुनामदन महाकवि देवकोटाको मौलिक रचना हो तर यसलाई पृथक टापुको रूपमा हेर्न मिल्दैन। यसको रचना क्रममा कवि देवकोटालाई अनेक ग्रन्थ, घटना, विचार, दर्शनले प्रभाव पारेको हुन सक्दछ।

'मुनामदन' शास्त्रीय मान्यतामा आधारित खण्डकाव्य हैन। शास्त्रीय आधारबाट यस खण्डकाव्यमा विचलन देखिन्छ। 'मुनामदन'मा महाकवि देवकोटाले नवीन प्रयोग गरेको पाइन्छ। महाकवि देवकोटा अङ्ग्रेजी साहित्यको धुरन्धुर विद्वान् हुनुहुन्थ्यो। अङ्ग्रेजी, रोमानी काव्य प्रवृत्तिको प्रचुर प्रभाव उहाँमा पाइन्छ। नेपाल साहित्यमा रोमानीवादी आन्दोलन उहाँकै नेतृत्वमा भएको देखिन्छ। संस्कृत काव्यशास्त्र, शैलीको पूर्ण प्रभावमा परेको नेपाली साहित्य वि.सं. १९९० बाट आधुनिक युगमा प्रवेश गर्दछ। पूर्वीय काव्यशास्त्र, पौराणिक, विषय, नैतिक उपदेशात्मक वृत्त तोढी विषय चयन, शैली प्रयोगमा यसपश्चात् कविलेखकहरूले बढी स्वतन्त्रता अपनाउन थालेको देखिन्छ।

मुनामदन खण्डकाव्यमा लक्ष्मीप्रसादको विषय चयन शैलीमा नौलोपन छ। दक्षिणी अर्थात् भारतीय शिक्षा, साहित्य, संस्कृतिको प्रभावबाट निस्केर मुनामदनमा कवि देवकोटाले उत्तरतर्फको तिब्बतीय विषयलाई ग्रहण गर्न पुगेको छ। तिब्बतीय क्षेत्रलाई केन्द्र बनाएर मुनामदन रच्नु नेपाली साहित्यमा उनको नौलो कदम मान्न सकिन्छ। मुनामदनको भाषा, लय, शैली पूर्वीय छन्द शास्त्रमा आधारित छैन। यो झ्याउरे लयमा रचिएको छ। झ्याउरे लोक शैली हो। देशको माटोमा उब्जेको लोक शैलीमा यस्तो महत्त्वपूर्ण ग्रन्थ लेख्नु महाकवि देवकोटाको आँटिलो निर्णय थियो। भनिन्छ झ्याउरे शैली प्रयोगमा ल्याउँदा संस्कृतवाज पण्डितहरूबाट कवि देवकोटाले ठूलो उपहास खेप्नु परेको थियो। स्वयं संस्कृत, अङ्ग्रेजी भाषा, साहित्यको विद्वान् भएरै पनि महाकवि देवकोटाले लोक शैली झ्याउरेलाई अपनाउन पुगे। मुनामदन लोकप्रिय हुनुको मुख्य कारण उनको यो निर्णयलाई लिन सहिन्छ।

मुनामदन आख्यान काव्य हो। आख्यान र कविताको संयोगले यो खण्डकाव्य भएको छ। प्रस्तुत आख्यानको सीमित दायरा, घेराको कारण यो महाकाव्य नभई खण्ड काव्य भएको छ। महाकवि देवकोटाको मुनामदनको कथा नेपाल भाषाको 'जि वया ला लाछि मदुनि' (म आएको एक महिना भएको छैन) नामको गीति नाटकमा आधारित देखिन्छ। 'जि वया ला लाछि मदुनि' करिब २०० वर्ष अगाडि राजेन्द्रविक्रम शाहका (वि.सं.१८७३-१९०४) पालामा नेपालभाषामा रचेको गीतिकथा हो। मुनामदनमा कवि देवकोटाले यसै रचनाको कथालाई गर्भकथाको रूपमा चयन गरेको पाइन्छ। कवि देवकोटाको आफ्नो अत्यन्त निकट सहपाठी चन्द्रबहादुर श्रेष्ठबाट यस गीतिकथाबारे सुनेका थिए। यसबाट अत्यन्त प्रभावित भई

महाकवि देवकोटाले यस कथालाई मुनामदनको आधार कथा बनाए।

नेपालभाषाको काव्य इतिहास ५०० वर्ष पुरानो छ। हालसम्मको खोजीअनुसार प्रथम कवि महेन्द्र मल्ल (वि.सं.१६१७–१६३६) देखि पछिका धेरै राजाहरूले असङ्ख्य स्तरीय गीतिकाव्य रचना गरेको पाइन्छ। मल्लकालपछि पनि नेपाल भाषामा गीति काव्य रचनाको प्रवाह रोकिएको थिएन। कोतपर्व (वि.सं.१९०३) पछि मात्र यसको विकास ठप्प हुन गयो। नेवारहरू व्यापार गर्न ल्हासामा जाने गर्थे। तिब्बतसँग नेपालको ब्यापार सम्बन्ध थियो। तिब्बत उत्तरतर्फको कठिन प्रदेश हो। ल्हासामा अन्य विदेशीहरू निषेधित थिए। नेपालीहरूले ल्हासामा व्यापार गर्ने विशेष अवसर पाएका थिए। नेपाल भाषामा ल्हासा व्यापारसँग सम्बन्धित विषयमा थुप्रै गीतिकथाहरू छन्। ल्हासामा उसबेला महिलाहरू जान पाउँदैन थिए। व्यापारीहरू ल्हासामा व्यापारको लागि जाँदा आफ्ना पत्नीहरूसँग विछोड खप्न बाध्य हुन्थे। वर्षौंसम्म पुरुषहरू ल्हासामा बस्दा महिलाहरूले ठूलो त्रासदिय नियति भोग्नु पर्थ्यो। आर्थिक दृष्टिकोणले लाभदायी भए पनि ल्हासा गई व्यापार गर्ने प्रथा दाम्पत्य जीवनको लागि ठूलो अभिशाप हुन्थ्यो। युवा रोजगारीको लागि ल्हासामा जाँदा विवाहित जवान महिलाहरू अत्यन्त पीडित हुन्थे। रातदिन आफूलाई दुःखको भुमरीमा परेको अनुभव गर्थे। गएका केही पुरुषहरू फर्कन्थे। पुनर्मिलन सम्भव भइदिन्थ्यो। कतिपयको दाम्पत्य जीवन वियोगान्तमा टुङ्गिन्थ्यो। ल्हासा व्यापार गर्न जाँदा श्रीमान्/श्रीमतीभित्र हुने विरह, विरक्ति विषयमा केन्द्रित पुराना गीति कथाहरू नेपालभाषामा थुप्रै छन्। आधुनिक कालमा आएरै पनि ल्हासा विषयमा कवि धर्मरत्न 'यमि' ले 'सँदेया लिसः' (भोट देशको उत्तर) नामको खण्डकाव्य रच्नु भएको छ। महाकवि चित्तधरका पनि ल्हासा व्यापारीहरूसँग सम्बन्धित कथा, गद्य रचनाहरू छन्। नेपालभाषामा रचिएको ल्हासा प्यापारसँग सम्बन्धित अत्यन्त मार्मिक 'जि वया ला लाछि मदुनि', गीतिकथा मुनामदनको कथावस्तुसँग अत्यन्त निकट छ। महाकवि देवकोटाले मुनामदनमा 'जि वया ला लाछि मदुनि' गीतिकथालाई स्रोत कथा वस्तुको रूपमा अपनाएको देखिए पनि मूल कथावस्तुमा हृदयस्पर्शी, कला, मार्मिक मोडहरू थप्नु भएको छ। फलस्वरूप मुनामदनको कथा संरचनाले आफ्नैपन उहाँले प्राप्त गरेको पाइन्छ।






जि वया ला लाछि मदुनि गीतिकथाको सारांश

यसमा आमा, छोरा, बुहारी मूल पात्रहरू। विवाह गरेर एक महिना नबित्दै पतिले ल्हासामा व्यापार गर्न जाने निधो गर्छ। पत्नी रोक्न खोज्छे। छोरालाई ल्हासा जानबाट रोकिदिन बुहारीले सासूलाई अनुनय विनय गर्छिन्। 'देशमा रोजगारी छैन। सासूको उत्तर हुन्छ। देशमा बसेर काम गरून्। आफ्नो दाइजो बेचेर लगानी जुटाइदिने प्रण पत्नी गर्छे तर पतिले जाने नै निश्चित गर्छ। पत्नी पतिसँग पारपाचुके माग्छिन्। पति उल्टो पत्नीलाई घर सम्हाल्ने जिम्मा दिन्छ। पति ल्हासातर्फ जान्छ। पत्नी विरहव्यथामा डुब्छिन्। बरोबर दुस्वप्न देख्छिन। एकदिन आफनो लोग्नेको मित्र भेट्छिन्। ऊ उनको पतिको मृत्युको खबर सुनाउँछे। प्रमाणस्वरूप उनको पतिको औंठी देखाउँछ। बुहारी सासूलाई यो खबर सुनाउँछ। सासु पत्याउँदैन। पत्नी पतिको मृत्युको खबरबाट मर्माहत हुन पुग्छिन्। पत्नी आफ्ना दिवङ्गत पतिको चितासँगै सती जाने निधो गर्छिन्। पतिको चिनो चित्तामा हालेर पत्नी चित्ताको अग्नि कुण्डमा आफूलाई समर्पित गर्छिन्।

तीन वर्षपछि छोरा ल्हासाबाट फर्किन्छ। घरमा फगत आमा मात्र हुन्छ। पत्नी पाउँदैन। आमासँग प्रिय पत्नीबारे सोधपुछ गर्छ। आमाले छोरालाई सबकुरा बताउँछिन। गुण्डा मित्रको षड्यन्त्र, बुहारीलाई त्यसबाट परेको आघात, बुहारीको मृत्युबारे सुनाउँछिन्। पत्नीको मृत्युको खबर सुनेर पतिमा वैराग्यभाव आउँछ। ऊ फकीर भएर घरबाट निस्कन्छ। यसरी 'जि वया ला लाछि मदुनि' दुखान्तमा अन्त्य हुन्छ।

**मुनामदनको कथाको सारांश–**

मुनामदनको मूल पात्रहरू आमा, मदन र मुना हुन्। मदन धन कमाउन भोट जाने निधो गर्दछ। पत्नी मुना आफूलाई छाडेर नजान मदनलाई आग्रह गर्छिन्। मदन मुनालाई ल्हासा जानुपर्ने आफ्नो उद्देश्यबारे सम्झाउँछ। ल्हासातर्फ जान्छ। कठिन यात्रा पार गरी ल्हासा पुग्छ। पतिसँगको विछोडमा मुना दुखित हुन्छिन्। एउटा गुण्डाले मुनामाथि आँखा लगाउँछ। षड्यन्त्र रच्छ। पतिव्रता मुना आफ्ना पतिको सम्झनामा रातदिन लीन रहन्छिन्। मुनाले एकदिन

दुस्वप्न देख्छिन। उता जङ्गल बाटोमा मदनलाई हैजा लाग्छ। जङ्गलमा एउटा दयालु भोटेले मदनलाई बचाउँछ। एकदिन गुण्डाले मुनालाई मदन मरेको खबर सुनाउँछ। मुना शोकग्रस्त हुन्छिन्। असह्य वेदनाले मुनाको अन्त हुन्छ। पछि मदन ल्हासाबाट घर फर्किन्छ। धन कमाएर। उसले घरमा मुना देख्दैन। आफ्ना दिदीसँग आमा, मुनाबारे सोध्छ। दिदीले आमा, मुनाको मृत्युको खबर सुनाउँछिन्। मदनलाई यसबाट मानसिक आघात हुन्छ। अन्त्यमा उसको पनि मृत्यु हुन्छ।

**समानता**

- जि वया ला लाछि मदुनि गीतिकथा र खण्डकाव्य मुनामदन दुवैमा मूल पात्र आमा, छोरा, बुहारी हुन्।
- दुवैमा छोराहरू व्यापारको लागि ल्हासा जान्छन्।
- पत्नीहरूले ल्हासा नजान आग्रह गर्छन्।
- नायकहरूको ल्हासा गमन–
- नायिकाहरूलाई दुस्वप्न
- नायकको मृत्युबारे नायिकाहरूलाई सूचना पतिका साथीहरूबाट
- नायिकाहरूको मृत्यु।
- दुवैमा विप्रलम्व श्रृङ्गार। करुण रस प्रधान
- दुवैमा लोकलयको प्रयोग
- मुनामदन रचनाको लय भ्याउरे

  जि वया ला लाछि मदुनि गीतिकथा नेवारी लोकलय सिनाज्या लय (रोपाँइ गीत) मा आधारित

  यसको विषय हाँसखेल, मनोरञ्जन हुने गर्दछ तर सिनाज्या लय गम्भीर विषय वस्तुमा पनि प्रयोग गरिएको पाइन्छ। जि वया ला लाछि मदुनि यस तथ्यको उदाहरण भएको छ।)
- जि वया ला लाछि मदुनि, मुनामदन दुवैमा संवाद शैली प्रयोग भएको पाइन्छ।

**अन्तर_**

समानताहरू भएरै पनि जि वया ला लाछि मदुनि र मुनामदनबीच मननीय अन्तरहरू छन।

- जि वया ला लाछि मदुनि आख्यान कविता ब्याले गीतको रूपमा छ। खण्डकाव्य महाकाव्यभन्दा यो फरक छ। यसको संरचना लघु आकारको छ। यसमा घटना र उपकथाहरूको सङ्क्षिप्त वर्णन मात्र छ।
- मुनामदन खण्डकाव्य हो। यसमा पात्र चित्रण, घटना विवरणमा विस्तृतीकरण देखिन्छ। उपकथा छ ।
- जि वया ला लाछि मदुनिमा नायक ल्हासाबाट फर्केपछि आमाबाट पत्नीको मृत्युबारे खबर सुन्छ।
- मुनामदनमा मुना र आमाको मृत्युको खबर मदनले आफ्नी दिदीबाट प्राप्त गर्छ।
- जि वया ला लाछि मदुनि गीतिकथामा नायक अन्तमा जोगी बन्छ।
- मुनामदनको नायकको अन्तमा शोकग्रस्त भई मृत्यु हुन्छ।
- जि वया ला लाछि मदुनि गीतिकथाको लेखक उल्लेख छैन। रचनाको अन्तमा तत्कालीन शासकको नाम उल्लेख छ, रचनाकाल यसैबाट बुझिन्छ।

यसरी दुवै रचनाहरूको समानता र अन्तरलाई हेर्दा दुवैको कथावस्तुको मूलस्वरूपमा निकटता बढी अनुभव गर्न सकिन्छ।

देवकोटाको मुनामदन अत्यन्त प्रभावशाली मौलिक ग्रन्थ भए पनि यसलाई एक्लै राखेर हेर्न मिल्दैन। अन्तर्पाठको सिद्धान्तले इङ्गित गरेझैं यसका निर्माणमा धेरै आधार सामग्रीहरूको भूमिका हुन्छ। कविले ल्हासा व्यापारमा आधारित कथावस्तु निर्माण गर्दा नेपाल तिब्बतको सम्बन्ध, नेपाल तिब्बतबीचका व्यापारिक, सांस्कृतिक, भौगोलिक, साहित्यिक पक्षहरूको अन्तर्सम्बन्ध पूर्वाधार, पृष्ठभूमिको रूपमा रहन्छन्। रचना निर्माणमा स्रष्टा यी विषयका ज्ञान, परिवेशबाट पृथक रहन सक्दैन।

प्रसिद्ध अमेरिकी समीक्षक हारोल्ड ब्लुमको anxiety of Influence बारे चर्चा गर्न यहाँ प्रासङ्गिक होला। नयाँ लेखकहरू पूर्व कृति, लेखक, परम्पराको प्रभावमा कसरी पर्दछन् र कसरी उनीहरू यस्ता प्रभावहरूबाट विचलन खोज्छन भन्ने विषयमा भन्छन्, ब्लोम कुनै पनि लेखक पूर्वज लेखकको प्रभावबाट पलायन हुन सक्दैन तर प्रभावमा परे पनि पूर्वज लेखकहरूको अन्धानुकरण नयाँ लेखकहरू गर्न चाहँदैनन। नयाँ पुस्ताका लेखकहरू पुराना प्रवृति, अग्रज लेखक, परम्पराको प्रभावलाई तोडमोड गरी आफ्ना रचनालाई आफ्नोपनमा ढाल्न खोज्छन। हरेक युगमा नयाँ पुस्ताका लेखक एकातर्फ पूर्वज लेखकहरूबाट प्रभावित हुन्छन् भने अर्कोतर्फ पूर्वज लेखकहरूको प्रभावलाई नयाँपनमा रूपान्तरित गर्न उनीहरू उतिकै चिन्तित हुन्छन। पूर्वज लेखकहरूसँग नयाँ पुस्ताका लेखकहरूको सम्बन्ध 'प्रेम र घृणा' दुवै विपरित भावमा आधारित हुने पनि र नयाँ लेखकहरू पुराना लेखकहरूमा आदर पोख्छन् तर उनीहरू पुराना लेखकहरूप्रति ईर्ष्याभाव पनि प्रबल राख्छन्। यस्तै ईर्ष्या भावले नयाँ लेखकहरू पुरानो लेखकहरूभन्दा फरक मौलिक, आफ्नै विशेषता भएका रचना गर्न उत्प्रेरित हुन्छन। हरेक नयाँ पुस्ताले यसरी साहित्य लेखनमा नयाँ देन दिँदै जाने हारोल्ड ब्लुमले विश्वास राखेका छन्।

महाकवि देवकोटाले मित्र चन्द्रबहादुर श्रेष्ठबाट सुन्न पाए। उनी यसबाट प्रभावित भए तर यस गीतिकथा अन्धानुसरण मुनामदनमा छैन। आधार कथावस्तुबाट प्रभावित भएरै पनि महाकवि देवकोटाले मुनामदन खण्डकाव्यलाई जि वया ला लाछि मदुनि गीतिकथाभन्दा कता हो कता भिन्न मौलिक, सिर्जनात्मकताले सम्पन्न गरी मुनामदनको कथावस्तुलाई अत्यन्त मार्मिक लयबद्ध सङ्गीतात्मक शैलीमा प्रस्तुत गर्नुभएको छ। अन्य ग्रन्थको विचार, दर्शनको अन्तरसम्बन्धले प्रतिभाशाली स्रष्टाको मौलिक सिर्जनात्मकता ह्रास हुँदैन। मुनामदनमा महाकवि देवकोटाले यो कुरा प्रमाणित गर्नुभएको छ। ❐